श्री सर्वोच्च अदालतमा चढाएको
लिखित जवाफ

मार्फतः- श्री महान्यायाधिवक्ताको कार्यालय,
रामशाहपथ ।

संवत् २०७७ सालको रिट नं.--------------------------------------------------------------------WO-०९७३

नेपाल सरकार, मन्त्रिपरिषदको तर्फबाट नेपाल सरकारको
मुख्य सचिव शंकरदास बैरागी -------------------------------------------------------लिखित जवाफ प्रस्तुतकर्ता
प्रत्यर्थी

बिरुद्ध

ललितपुर जिल्ला, ललितपुर महानगरपालिका
वडा नं. १६ पतको टोल बस्ने वर्ष २२ को रुक्सना कपाली------------------------------ विपक्षी/रिट निवेदक

मुद्दाः-उत्प्रेषण समेत ।

रिट निवेदकले नेपाल सरकार, मन्त्रिपरिषद् समेतलाई विपक्षी बनाई सम्मानित अदालत समक्ष दिनु भएको सम्बत् २०७७ सालको रिट नं. WO-०९७३ को रिट निवेदनमा के कसो भएको हो ? निवेदकको माग बमोजिमको आदेश किन जारी हुनु नपर्ने हो ? आदेश प्राप्त भएको मितिले १५ दिनभित्र महान्यायाधिवक्ताको कार्यालय मार्फत लिखित जवाफ पठाउनु भन्ने आदेश सहितको सूचना प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा मिति २०७८।१।६ मा प्राप्त भएकोमा म्यादभित्रै निम्न बमोजिम लिखित जवाफ पेश गरेको छु :-

१. निवेदक पारलैङ्गिक महिला (Transgender Women) हुँ । सामाजिक मूल्यमान्यताबाट प्रभावित व्यक्तिबाट हुने विभिन्न किसिमका घृणा, लाञ्छना र टिकाटिप्पणीका कारण निवेदकले आफ्नो वास्तविक लैङ्गिक पहिचानका बारेमा खुलेर व्यक्त गर्न सक्ने अवस्था थिएन । सो नभएता पनि एस.एल.सी. उतिर्ण गरिसकेपछि निवेदकले आफ्नो वास्तविक लैङ्गिक पहिचान अनुसार नै जीवनयापन गर्ने र पहिचान स्थापना गर्ने गरी वास्तविक लैङ्गिक पहिचान बमोजिम नै नागरिकता प्राप्त गर्न खोज्दा प्रचलित कानूनी व्यवस्थाका कमीकमजोरी देखाउदै नागरिकतामा वास्तविक लैङ्गिक पहिचान "महिला" उल्लेख गर्न नमिल्ने भनी मिति २०७२/३/११ मा लैङ्गिक महलमा 'अन्य (Others)' उल्लेख गरी नागरिकता जारी गरिएको छ । उक्त नागरिकता प्रमाणपत्रमा 'अन्य' उल्लेख भएकै कारण निवेदकलाई मानवता जनाउने शब्द प्रयोग नगरिएकाले लैङ्गिक पहिचानको सहि प्रतिनिधित्व गर्ने नाम र कागजप्रमाणहरुमा आफ्नो लैङ्गिक पहिचान अनुसार संशोधन, परिमार्जन गर्न परमादेशको आदेश जारी गरिपाउं भन्ने समेतको निवेदन दावी रहेछ ।

२. विपक्षी निवेदकले दावी लिनु भएको विष्यमा नेपाल सरकार, मन्त्रिपरिषदको के, कस्तो संलग्नता रहेको हो ? साथै मन्त्रिपरिषद्को के कस्तो काम, कारवाही वा निर्णयबाट निवेदकको के कस्तो संवैधानिक तथा कानूनी हक

अधिकारको हनन् भएको हो ? भन्ने सम्बन्धमा निवेदनमा कुनै कुरा उल्लेख भएको छैन । कसैका बिरुद्ध कुनै कुराको दावी लिंदा तत्सम्बन्धमा रहेको संलग्नता र प्रत्यर्थी बनाउनु पर्नाको आधार र कारण निवेदनमा स्पष्टसँग उल्लेख गरिएको हुनु पर्दछ । प्रस्तुत रिट निवेदनमा विपक्षी निवेदकले दावी लिनु भएको विषयमा नेपाल सरकार, मन्त्रिपरिषद्को संलग्नता एवं प्रत्यर्थी बनाउनु पर्नाको आधार र कारण खुलाउन नसकेको हुँदा रिट निवेदन प्रथम दृष्टि मै खारेजभागी छ, खारेज गरी पाउँ ।

३. नेपालको संविधानको धारा १० देखि धारा १५ सम्ममा नागरिकतासम्बन्धी व्यवस्थालाई संवैधानिक रुपमा नै सुनिश्चित गरेको छ । संविधानले वंशीय आधार तथा लैङ्गिक पहिचानसहितको नागरिकता पाउने सम्बन्धमा धारा १२ मा "यो संविधानबमोजिम वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्ने व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैङ्गिक पहिचानसहितको नेपालको नागरिकता प्रमाण पत्र पाउन सक्नेछ" भनी उल्लेख गरेबाट निवेदकको आफ्नो लैङ्गिक पहिचानसहितको नागरिकता प्रमाण पत्र प्राप्त गर्न के कुन आधारमा द्विविधा भएको हो सो उल्लेख गरेको देखिदैन । नेपालको संविधान जारी भएपछि संविधान बमोजिम नागरिकता ऐन, २०६३ मा संशोधन गर्नु पर्ने विषयहरुमा संशोधनको लागि संशोधन विधेयक संघीय संसदमा पेश भई सकेको छ ।

४. नेपाल नागरिकता ऐन,२०६३ तथा नियमावली, २०६३ ले निर्धारण गरेको विधि, प्रक्रिया र कार्यविधिको अवलम्बन गरी नागरिकताको प्रमाण पत्र प्राप्तिका लागि सम्बन्धित निकायमा निवेदन दिई नागरिकता प्राप्त गर्न सक्ने स्पष्ट व्यवस्था गरिएको छ । साथै यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा अन्य जनाई नागरिकता जारी गर्नेसम्बन्धी निर्देशिका, २०६९ ले नेपालको प्रचलित कानूनबमोजिम नागरिकता प्राप्त गर्न योग्य भएका निवेदक जस्ता व्यक्तिहरूले सम्बन्धित स्थानीय निकाय र शैक्षिक संस्थाको अभिलेखबमोजिम सिफारिस भई आएमा त्यस्ता व्यक्तिको हकमा लिङ्गको ठाउँमा अन्य लेखी व्यक्तिको पहिचान खुल्ने गरी नागरिकता जारी गर्ने सम्बन्धमा कानूनमा व्यवस्था भइसकेको देखिन्छ ।

५. रिट निवेदकले आफ्नो शैक्षिक तथा अन्य व्यक्तिगत कानूनी कागज पत्रमा रहेको नाम तथा लैङ्गिक विवरण जस्ता व्यक्तिगत विवरण संशोधन वा परिवर्तन गर्न आदेश जारी गरी पाउँ भनी दावी गरेको सन्दर्भमा सो दावी के कुन आधारमा गर्नु भएको हो त्यस्को कानूनी आधार खुलाउन सकेको देखिंदैन । सरकारी कागजात सच्याउने सम्बन्धमा "उमेर, नाम र जात सच्याउने नियमहरु, २०१७" जारी भएकै छ । प्रस्तुत नियमावलीको नियम ३ मैं कुनै व्यक्तिले आफ्नो प्रमाणपत्रमा रहेको उमेर, नाम र जात सच्याउन चाहेमा प्रमुख जिल्ला अधिकारी समक्ष दरखास्त दिनुपर्ने र प्रमुख जिल्ला अधिकारीले निजसँग भएको सबूद प्रमाण र आवश्यकतानुसार साक्षी सरजमीन समेत बुझी अन्तिम निर्णय गर्न सक्ने व्यवस्था रहेको छ । त्यस्तै ऐको नियम ६ मा त्यसरी कागजात सच्याउन उक्त प्रमाणपत्र प्राप्त गरेको छ महिनाभित्र निवेदन पेश गर्नु पर्ने व्यवस्था रहेको छ । प्रस्तुत व्यवस्था बमोजिम आफ्ना कुनै कागजात सच्याउनु पर्ने भए निवेदन गरी उपचार प्राप्त गर्नु पर्नेमा सो नगरी असाधारण क्षेत्राधिकार अन्तर्गत रिट क्षेत्राधिकारबाट सरकारी कागजात सच्याई पाउँ भन्ने दावी गैरकानूनी छ । त्यस्तो दावीलाई कुनै कानूनले संरक्षण गर्न सक्दैन ।

६. नेपाल नागरिकता ऐन, २०६३ को दफा १७ मा कुनै व्यक्तिले आफ्नो नेपाली नागरिकताको प्रमाणपत्रमा उल्लिखित थर वा उमेर शैक्षिक योग्यताको प्रमाणपत्रमा फरक पर्न गई वा नागरिकताको प्रमाणपत्रमा सानातिना त्रृटी भई सो विवरण सच्याउन चाहेमा आवश्यक प्रमाण सहित तोकिएको अधिकारी समक्ष निवेदन दिनु पर्नेछ भन्ने सम्बन्धमा व्यवस्था गरेको छ । त्यस्तै ऐको दफा १८ मा यस ऐनमा लेखिएकोमा बाहेक कुनै अधिकारीले दिएको आदेशबाट मर्का पर्ने कुनै व्यक्तिले दोहो-र्याई हेरी पाउन नेपाल सरकारसमक्ष निवेदन गर्न सक्ने व्यवस्था उक्त दफा १८ मा व्यवस्था गरिएको छ । प्रस्तुत व्यवस्था बमोजिम कसैले आफ्नो नागरिकतामा भएको विवरणमा सच्याउन पर्ने भए नेपाल नागरिकता ऐन,२०६३ को दफा १७ बमोजिम निवेदन गर्न सक्ने र सोमा चित्त नबुझेमा पैतीस दिनभित्र नेपाल सरकारसमक्ष निवेदन गर्न सक्नेमा सो नगरी रिट क्षेत्राधिकारबाट नागरिकता सच्याई पाउँ भनी दायर निवेदन आफैमा कानूनसम्मत छैन ।

७. विगतमा सम्मानित सर्वोच्च अदालतमा मुद्दा परी सम्मानित सर्वोच्च अदालतबाट आदेश जारी भई नागरिकता प्रदान सहितका व्यवस्थामा पहिचानको व्यवस्था कायम गरिएकोमा हाल पुन पहिचान लुकाई पाउँ भनी दायर निवेदन अनुचित देखिन्छ । मुलुकमा के कस्तो कानून जारी गर्ने भन्ने विषय विधायिकी बुद्धिमत्ताको विषय हो । यौनिक तथा लैङ्गिक अल्पसंख्यकको पहिचान तथा संरक्षणको लागि आवश्यक नीतिगत व्यवस्थाका साथै नेपालले अन्तर्राष्ट्रिय रुपमा गरेका प्रतिवद्धताको कार्यान्वयनमा नेपाल सरकार दृढ रहेको र सोही बमोजिम मुलुकको शासकीय प्रणालीमा आएको परिवर्तन बमोजिम प्रदेश तथा स्थानीय तहहरुबाटसमेत काम कारवाहीहरु भई रहेको छ । नेपाल सरकारबाट भएका काम कारवाहीबाट कसैको वैयक्तिक स्वतन्त्रतामा असर पुगेको अवस्था नभएको हुँदा प्रस्तुत निवेदन खारेजभागी छ, खारेजगरी पाउँ ।

८. विपक्षी बनाइएका अन्य निकायहरुबाट भए गरेका काम कारवाही सम्बन्धमा सम्बन्धित निकायबाट पेश हुने लिखित जवाफबाट थप अवगत हुने नै छ ।

९. अतः माथि उल्लिखित बुँदाका आधारमा प्रस्तुत रिट निवेदन खारेज गरी पाउँन सम्मानित अदालत समक्ष सादर निवेदन गर्दछु ।

१०. मुद्दाको सुनुवाईको क्रममा उपस्थित हुनु हुने सरकारी वकील तथा अन्य कानून व्यवसायीको बहस जिकीर समेतलाई यस लिखित जवाफको अभिन्न अंग मानी पाउँ ।

लिखित जवाफ प्रस्तुतकर्ता

(शंकरदास बैरागी)
मुख्य सचिव
नेपाल सरकार

इति सम्बत् २०७८ साल वैशाख महिना २० गते २ रोज शुभम् ।

# श्री सर्वोच्च अदालतमा प्रस्तुत गरिएको
# लिखित जवाफ

फाँट नं. रिट – ६ रिट नं. ०७७–WO–०९७३(०७७–FN–०५०९)

मार्फत : श्री महान्यायधिवक्ताको कार्यालय, रामशाहपथ काठमाडौं ।

जिल्ला प्रशासन कार्यालय ललितपुरका तर्फबाट प्रमुख जिल्ला अधिकारी ढुण्डी प्रसाद निरौला ......... प्रस्तुतकर्ता

**विरूद्ध**

ललितपुर जिल्ला ल्लितपुर महानगरपालिका वडा नं. १६ पतको टोल बस्ने बर्ष २२ को रुक्शना कपाली .........विपक्षी

## मुद्दा– उत्प्रेषण, परमादेश ।

रिट निवेदकले यस कार्यालय समेतलाई विपक्षी बनाई नेपालको संविधानको धारा १, १२, १६, १७, १८, २७, २८, ३१, ३३, ३५, ३७, ३८, ३९, ४२ एवं १३३ (२) (३) तथा सर्वोच्च अदालत नियमावली २०७४ को नियम ४० वमोजिम उत्प्रेषण/परमादेशको आदेश वा पुर्जी जारी गरी पाउँ भनी सम्मानीत सर्वोच्च अदालतमा दिएको उत्प्रेषण/परमादेश मुद्दामा तहाँ सम्मानित सर्वोच्च अदालतबाट १५ (पन्ध्र) दिन भित्र लिखित जवाफ पेश गर्न मिति २०७७।१२।३१ मा भएको आदेश मिति २०७८।०१।०९ गतेका दिन यस कार्यालयमा तामेल भएकोले तोकिएको म्याद भित्रै निम्न बमोजिमको सबुद प्रमाण सहितको लिखित जवाफ प्रस्तुत गरिएको छ ।

(१) विपक्षी निवेदकले निवेदनमा उल्लेख गरेको जिकिर संलग्न प्रतिउत्तर साथ समावेश भएकोले ब्यहोरा सोही प्रतिउत्तर पत्रबाट अवगत हुने नै हुँदा यहाँ पुनराबृत्ति गरिएको छैन ।

(२) विपक्षी रिट निवेदकको रिट निवेदनमा लिएको जिकिर सम्बन्धमा संलग्न नागरिकता, शैक्षिक प्रमाणपत्रहरु लगायतका कागजपत्र तथा विपक्षी निकायहरुमा गरिएका पत्राचारहरुमा मेरो वास्तविक लैङ्गिक पहिचान विपरीतका नाम तथा लैङ्गिक विवरण उल्लेख छ । यी कागजपत्रहरु सार्वजनिक भएको अवस्थामा मेरो व्यक्तिगत विवरणको गोपनीयता समेत भङ्ग हुन जाने भएकोले उक्त नागरिकता, शैक्षिक प्रमाणपत्रहरु, विपक्षी निकायहरुमा गरिएका पत्राचार लगायतका कागजपत्रहरुलाई गोप्य राख्न, यस मुद्दासँग सम्बन्धित अधिकारी वाहेक अरु कुनै व्यक्ति, संस्था, सञ्चारमाध्यमलाई उपलब्ध नगर्नु नगराउनु एवं कुनै हिसाबले सार्वजनिक नगर्न नगराउन अन्तरिम आदेश तथा यस मुद्दा किनार लागिसकेपछि ती कागजपत्रहरुलाई अरु कुनै हिसाबले सार्वजनिक नगर्न नगराउन पूर्णत गोप्य राख्ने । मेरो लैङ्गिक पहिचानको सहि प्रतिनिधित्व नगर्ने नाम तथा लैङ्गिक विवरण उल्लेख छ । म त्यस नाम तथा लैङ्गिक विवरणले चिनिन चाहन्न । त्यस्ता नाम तथा लैङ्गिक विवरणले सम्बोधन हुँदा मेरो आत्मसम्मानमा गम्भीर चोट पुग्नुका साथै मलाई मनोभावनात्मक पीडा समेत निम्त्याउँछ । तसर्थ यस रिट निवेदनको कामकारवाही, सुनुवाई, बहस लगायत विपक्षीद्वारा पठाइने लिखित जवाफमा समेत त्यस नाम तथा लैङ्गिक विवरणबाट मलाई सम्बोधन नगर्न नगराउन र निवेदनमा उल्लिखित रुक्शना नामबाट नै सम्बोधन गर्न गराउन एवं मेरो मृतनामको प्रयोग, उल्लेख र सम्बोधन नगर्न नगराउन अन्तरिम आदेश जारी गरी पाउँ । त्यस नाम तथा लैङ्गिक विवरणको बारेमा जिकिर गर्नुपर्दा निजको मृतनाम अथवा निजको शैक्षिक प्रमाणपत्रमा उल्लेख नाम भनि सम्बोधन वा जिकिर गरी पाउँ । मेरो व्यक्तिगत कागजप्रमाणहरुमा उल्लेखित नाम तथा लैङ्गिक विवरण मेरो वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण महिला र नाम रुक्शना कपाली उल्लेख गरि संशोधन गर्न गराउन भनि जन्मदर्ताको हकमा राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग, ललितपुर महानगरपालिकाको



प्रमुख जिल्ला अधिकारी

निवेदक स्वयंको हुने नेपाल नागरिकता ऐन, २०६३ को दफा १७ मा विवरणा सच्याउने (१) कुनै व्यक्तिले आफ्नो नेपाली नागरिकताको प्रमाणपत्रमा उल्लिखित थर वा उमेर शैक्षिक योग्यताको प्रमाणपत्रमा फरक पर्न गई वा नागरिकताको प्रमाणपत्रमा सानातिना त्रुटी भई सो विवरण सच्याउन चाहेमा आवश्यक प्रमाण सहित तोकिएको अधिकारी समक्ष निवेदन दिनुपर्नेछ भन्ने कानूनी प्रावधान रहेको हुँदा निजले महिला भएको प्रमाण पेश गरेको अवस्थामा लिङ्गको महलमा महिला उल्लेख गरी नागरिकता प्रमाण पत्र संशोधन गरी प्रतिलिपि नेपाली नागरिकता प्रमाण पत्र दिइने नै छ ।

(ख) अतः विपक्षी रिट निवेदकको जिकिरमा कुनै सत्यता नभएको, आधारहीन, कपोलकल्पित एवम् झुठ्ठा भएकोले विपक्षी निवेदकले दिएको उत्प्रेषण/परमादेश निवेदन त्रुटीपूर्ण भएकोले यस कार्यालयको हकमा खारेज भागी छ ।

(६) प्रस्तुत मुद्दा इजलाश समक्ष पेश हुँदा उपस्थित हुनु हुने विद्वान सरकारी वकीलको बहस जिकिर समेतलाई यसैको अभिन्न अंग मानि पाउँ ।

(७) माथि लेखिएको व्यहोरा ठिक साँचो हो झुठ्ठा ठहरे कानून वमोजिम सहुँला बुझाउँला ।

प्रस्तुतकर्ता



(ढुण्डी प्रसाद निरौला)
प्रमुख जिल्ला अधिकारी
जिल्ला प्रशासन कार्यालय,
ललितपुर

इति सम्बत् २०७८ साल बैशाख १९ गते रोज १ शुभम्......

श्री सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

मार्फतः महान्याधिवक्ताको कार्यालय, रामशाहपथ ।

शिक्षा विकास तथा समन्वय इकाइ, ललितपुरको तर्फबाट ऐ. का प्रमुख रमेश प्रसाद मैनाली
........................................................................................ लिखितजवाफ प्रस्तुतकर्ता
प्रत्यर्थी

विरुद्ध

ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं. १६ बस्ने रुक्शना कपाली ........................ विपक्षी
रिट निवेदक

रिट नं. २०७७ – WO - ०९७३

मुद्दाः उत्प्रेषण समेत

उपरोक्त विपक्षीले यस शिक्षा विकास तथा समन्वय इकाइ, ललितपुर समेतलाई विपक्षी बनाई दायर गरेको उत्पेषणयुक्त परमादेश रिट निवेदनमा सम्मानित अदालतको एक न्यायाधीशको इजलाशबाट निवेदकको माग बमोजिमको आदेश किन जारी हुनु नपर्ने हो ? आदेश जारी हुनु नपर्ने आधार, कारण र प्रमाण भए सो समेत खुलाई सूचना प्राप्त भएको मितिले १५ (पन्ध्र) दिन भित्र लिखित जवाफ पेश गर्नु भनि भएको आदेश सहितको म्याद सूचना मिति २०७८।०१।०९ मा तामेल भएकोमा Covid-19 को प्रकोपको कारण निषेधाज्ञाको कारण म्यादै भित्र लिखित जवाफ फिराउन नसकी अवस्था समान्य तर्फ उन्मुख रहेकोले यस इकाइको हकमा निम्नानुसार लिखित जवाफ पेश गरेको छु ।

१. निवेदन व्यहोरा सक्कल मिसिलबाट अवगत हुने नै हुँदा यहाँ पुनरोक्ति गरिएको छैन ।

२. विपक्षी निवेदकले आफू पारलैङ्गिक महिला (Transgender Women) भएकोले नेपाली नागरिकताको प्रमाणपत्र तथा शैक्षिक प्रमाणपत्र लगायतका कागजपत्रमा लैङ्गिक पहिचान बमोजिम संशोधन हुन नसक्दा संविधान प्रदत्त मौलिक हकमा आघात परेकोले लैङ्गिक पहिचानमा असर पर्ने काम, कारवाही, सिफारिस तथा निर्णय उत्प्रेषणको आदेशले बदर गरी नाम रुक्शाना कपाली र लैङ्गिक



२।२८

इकाइ प्रमुख

२/१२।

विवरणमा महिला कायम गर्न परमादेशको आदेश समेत जारी गरी पाउँ भन्ने मुख्य रिट निवेदन व्यहोरा उल्लेख गर्नु भएको रहेछ।

३. देहायको आधार कारणबाट उक्त निवेदन खारेज गरी पाउँन सादर निवेदन गर्दछु:

(क) शिक्षा ऐन, २०२८ को दफा ४ट. को प्रतिवन्धात्मक वाक्यांशमा आधारभुत तहको परीक्षा जिल्ला शिक्षा कार्यालयबाट हुने उल्लेख भएको र शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयको च. नं. १५७०, मिति २०७५।१।१९ को पत्रानासर साविक जिल्ला शिक्षा कार्यालबाट सम्पादन हुदै आएको काम समेत यस इकाइबाट सम्पादन हुदै आएको छ। त्यसै गरी शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयको च. नं. ३७९, मिति २०७६।११।२७ को पत्रसाथ मन्त्रीस्तरिय निर्णयबाट स्वीकृत "आधारभूत तह कक्षा आठको परीक्षा संचालन तथा प्रमाणीकरण सम्वन्धी मापदण्ड, २०७६" को दफा १५ मा परीक्षा समितिले प्रमाणपत्र दिनु पर्ने उल्लेख भएको र सो प्रमाणपत्रको ढाँचा सोही मापदण्डको अनुसूची- २ मा व्यवस्था गरिएको छ। यस इकाइबाट प्रचलित कानून बमोजिम गरेको काम कारवाहीले विपक्षीको संविधान तथा कानून प्रदत्त कुनै पनि हक अधिकार हनन नभएकोले रिट निवेदन खारेज गरी पाउँ ।

(ख) विपक्षी रिट निवेदकले रिट निवेदनको प्रकरण नं. ५.११ मा कक्षा आठको DLE प्रमाणपत्र संशोधनको लागि यस इकाइमा निवेदन दिंदा नाम संशोधन गरिएको तर लैङ्गिक विवरणमा "अन्य" उल्लेख गरेको भनि खुलाउनु भएको छ। सो सम्वन्धमा आवश्यक कागजात, प्रमाणको आधारमा निजको नाम संशोधन भएको विपक्षीले नै स्वीकार गर्नु भएको छ। निजको आफैले भरेका विररण तथा प्रचलतित कानूनको अधिनमा रही निजको लैङ्गिक विवरणमा "अन्य" राखी संशोधन गरिएको व्यहोरा सम्मानित अदालत समक्ष सादर निवेदन गर्दछु ।

(ग) विपक्षी रिट निवेदककै सहमतिमा निजले पेश गरेको प्रमाण कागजातको आधारमा निजको नाम तथा लैङ्गिक विवरण समेत सच्चाइएकोले सो कार्यबाट विपक्षीको कुनै संवैधानिक तथा कानूनी अधिकार हनन नभएकोले रिट निवेदन खारेज भागी छ, खारेज गरी पाउँ ।

४. विपक्षी बनाइएका अन्य कार्यालयबाट लिखित जवाफ पेश हुने नै छ।

५. प्रस्तुत रिट निवेदन सुनुवाई हुदाँका बखत सरकारी वकिलबाट हुने वहस पैरवीलाई यसै लिखित जवाफको अभिन्न अङ्ग मानी पाउँ ।

६. यसमा लेखिएको व्यहोरा ठिक साँचो छ, झूठ्ठा ठहरे कानून बमोजिम सहुँला बुझाउँला ।



लिखित जवाफ प्रस्तुतकर्ता

रमेश प्रसाद मैनाली

इकाइ प्रमुख

शिक्षा विकास तथा समन्वय इकाइ, ललितपुर

इति सम्वत् २०७८ साल असार गते ०९ रोज ५ शुभम् ।

श्री सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

मार्फत: श्री महान्यायाधिवक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं ।

रिट नं. ०७७- WO-०९७३

राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभागबाट ऐ .का

महानिर्देशक.............................................................................................लिखित जवाफ प्रस्तुतकर्ता

प्रत्यर्थी

विरुद्ध

रुक्सना कपाली ...................................................................................................विपक्षी

रिट निवेदक

मुद्दाः- परमादेश ।

उपर्युक्त विपक्षीले यस विभाग समेतलाई विपक्षी बनाई सम्मानित सर्वोच्च अदालत समक्ष दायर गर्नु भएको उल्लेखित रिट निवेदनका सम्बन्धमा सम्मानित अदालतबाट यसमा के, कसो भएको हो? निवेदकको माग बमोजिम आदेश किन जारी हुनु नपर्ने हो ? आदेश जारी हुन नपर्ने मनासिव आधार र कारण भए सो समेत खुलाई सूचना म्याद प्राप्त भएका मितिले बाटाको म्याद बाहेक १५ (पन्ध्र) दिन भित्र महान्यायाधिवक्ताको कार्यालय मार्फत लिखित जवाफ पेश गर्नु भन्ने व्यहोराको मिति २०७७/१२/३१ मा जारी भएको आदेश सहितको म्याद सूचना यस विभागमा मिति २०७८/०१/०६ मा तामेली हुन आएकोमा तोकिएको म्याद भित्र निवेदकको माग बमोजिम आदेश जारी हुनु नपर्ने व्यहोराको आधार, कारणहरु खुलाई यो लिखित जवाफ प्रस्तुत गरेको छु।

१. निवेदकको मुख्य व्यहोरा मूलतः मेरो व्यक्तिगत कागज प्रमाणहरुमा उल्लेखित नाम तथा लैङ्गिक विवरण मेरो वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण महिला र नाम रुक्शना कपाली उल्लेख गरि संशोधन गर्न गराउन भनि जन्मदर्ताका हकमा राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग, ललितपुर महानगरपालिकाको कार्यालय र ललितपुर महानगरपालिका वडा नं. १६ कार्यालयको नाउँमा कक्षा ८ को शैक्षिक प्रमाणपत्रको हकमा जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ ललितपुरको नाउँमा, नागरिकता प्रमाणपत्रको हकमा गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालय ललितपुरको नाउँमा, राहदानीको हकमा राहदानी विभागको नाउँमा, मतदाता परिचयपत्रको हकमा निर्वाचन आयोगको नाउँमा, कक्षा १० को चारित्रिक प्रमाणपत्रको हकमा इडेन गार्डेन आवासिय विद्यालयको नाउँमा लगायत सम्पूर्ण विपक्षी कार्यालयहरुद्वारा प्रदान गरिने मेरो व्यक्तिगत



कागज प्रमाणमा समेत समय सीमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समय सीमा समेत तोकी परमादेश लगायत उपयुक्त आदेश जारी गरीपाऊँ भन्ने समेत व्यहोराको जिकिर रहेको छ ।

२. राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग संविधान एवं कानून प्रद्दत नागरिकका हक अधिकारको संरक्षण र सम्वर्धन गर्न सदा कटिबद्ध रहेको छ। संविधान र अन्य प्रचलित कानूनमा व्यवस्था गरिएका हक अधिकार प्रत्येक नागरिकको लागि समान रुपमा लागु हुने र त्यस्तो कानूनद्वारा प्रदान गरिएको हक अधिकारबाट वञ्चित गर्ने कुनै पनि आदेश दिइएको छैन। जहाँ जसम्म निवेदकको माग दावी बमोजिमको व्यक्तिगत कागज प्रमाणहरुमा उल्लेखित नाम तथा लैङ्गिक विवरणमा वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण महिला र नाम रुक्शना कपाली उल्लेख गरी नागरिकता प्रमाणपत्रको संसोधन गर्न गराउन माग रहेकोमा राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण ऐन, २०७६ को दफा २५मा यो ऐन लागू भएपछि जन्मेको बच्चाको उमेर नाम, थर वा अन्य विवरण यस ऐन बमोजिम एक पटक दर्ता भई प्रमाणपत्र प्रदान गरिएपछि सच्याउनु परेमा त्यसको लागि सम्बन्धित व्यक्तिले त्यस्तो प्रमाणपत्र लिएको एक वर्षभित्र स्थानीय पञ्जिकाधिकारीको कार्यालयमा तोकिएको ढाँचामा दरखास्त दिन सक्नेछ भन्ने व्यवस्था रहेको र सो को नियमावली, २०७७ को नियम २३ व्यक्तिगत घटना दर्ताको विवरण सच्याउनुपरेमा सम्बन्धित व्यक्तिले अनुसूची २६ बमोजिमको ढाँचामा सम्बन्धित स्थानीय पञ्जिकाधिकारीको कार्यालयमा निवेदन दिनुपर्नेछ भन्ने प्रावधान रहेको देखिन्छ। यद्यपि निवेदकको माग बमोजिम लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण र नाम संशोधन गर्न गराउन सक्ने सम्बन्धमा माथि उल्लेखित ऐन र नियमावलीमा कहीं कतै उल्लेख भएको नदेखिएकोले कुनै पनि विषयमा के कस्तो कानून निर्माण वा संशोधन गर्नु पर्ने भन्ने विषय विधायिकाको अधिकार क्षेत्रभित्र पर्ने विषय भएको हुनाले यस विभागलाई विपक्षी बनाउनु पर्ने कुनै पनि आधार कारण छैन। विना आधार र कारण यस विभागलाई समेत विपक्षी बनाई दायर भएको प्रस्तुत रिट निवेदन खारेज भागी हुँदा खारेज गरी पाऊँ।

३. रिट निवेदकले विपक्षी बनाइएका अन्य निकायबाट प्रस्तुत हुने लिखित जवाफबाट थप पुष्टि हुने नै छ।

४. प्रस्तुत मुद्दाको सुनुवाईको क्रममा उपस्थित हुनु हुने सरकारी वकीलको बहस जिकिर तथा निजले पेश गर्न सक्ने प्रमाण, कागजातलाई समेत यसै लिखित जवाफको अभिन्न अंग मानी पाउँ।

लिखित जवाफ प्रस्तुतकर्ता




..................

(जितेन्द्र बस्नेत)

महानिर्देशक

इति सम्वत् २०७८ साल बैशाख महिना १७ गते रोज ६ शुभम् ...............................।

सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

रिट नं. ०७७-WO-०९७३

मार्फत :- महान्यायाधिवक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं

निर्वाचन आयोग, नेपालको तर्फबाट ऐ.का निमित्त सचिव राजकुमार श्रेष्ठ ... लिखित जवाफ प्रस्तुतकर्ता विपक्षी

विरुद्ध

जिल्ला ललितपुर, ललितपुर महानगरपालिका वडा नं १६, पतको टोल वस्ने वर्ष २२ को महिला रुक्शना कपाली........................................................ पक्ष निवेदक

मुद्दा :- परमादेश ।

विपक्षी निवेदकले यस आयोग समेतलाई विपक्षी बनाई सम्मानित अदालत समक्ष दायर गर्नु भएको रिट निवेदनमा यसमा के कसो भएको हो? निवेदकको माग बमोजिमको आदेश किन जारी हुनु नपर्ने हो? आदेश जारी हुनु नपर्ने भए आधार र कारण सहित यो आदेश प्राप्त भएका मितिले १५ दिनभित्र लिखित जवाफ पेश गर्नु भनी भएको आदेश सहितको म्याद सूचना यस आयोगमा मिति २०७८।०१।०५ मा प्राप्त हुन आएको हुँदा म्याद भित्रै महान्यायाधिवक्ताको कार्यालय मार्फत लिखित जवाफ प्रस्तुत गरेको छु।

(१) म निवेदक पारलैङ्गिक महिला हुँ । मेरो लैङ्गिक पहिचान महिला हो । नेपाली भएका नाताले संविधान तथा कानूनद्वारा संरक्षित शिक्षा लगायत मौलिक हकको उपभोग गर्न पाउनु मेरो आधारभूत मानव अधिकार हो तर मलाई पारलैङ्गिक महिला भएकोले उल्लिखित अधिकारबाट वञ्चित गरिएको, मेरो नागरिकता र शैक्षिक प्रमाणपत्र लगायतका कानूनी कागजपत्रमा उल्लिखित व्यक्तिगत विवरणमा लैङ्गिक पहिचान बमोजिम संशोधन हुन नसक्दा आत्मसम्मानमा चोट पुगेको हुँदा शैक्षिक प्रमाणपत्र, राष्ट्रिय परिचयपत्र, जन्मदर्ता प्रमाणपत्र, मतदाता परिचयपत्रमा नाम तथा विवरणमा रुक्सना कपाली र महिला उल्लेख गरी संशोधन गर्न गराउन तथा हालको कानूनी व्यवस्थालाई संशोधन गर्न गराउन र अभिलेखमा रहेको मृत नाम र मृत लैङ्गिकता सम्बन्धीको विवरण सार्वजनिक नगर्न नगराउन परमादेश लगायत उपयुक्त आदेश जारी गरी पाउँ भन्ने समेतको निवेदन माग दावी रहेछ।

२) देहायका आधार र कारणबाट रिट निवेदन खारेजभागी हुँदा खारेज गरी पाउँ :-

(क) विपक्षी निवेदकले दावी लिनु भएको विषयमा निर्वाचन आयोगको के कस्तो संलग्नता रहेको हो ? साथै यस आयोगको के कस्तो काम कारवाही वा निर्णयबाट निवेदकको के कस्तो संवैधानिक तथा कानूनी हक अधिकारको हनन भएको हो ? भन्ने सम्बन्धमा निवेदनमा कुनै कुरा उल्लेख भएको छैन । कसैका विरुद्ध कुनै कुराको दावी लिंदा तत्सम्बन्धमा रहेको संलग्नता र प्रत्यर्थी बनाउनु पर्नाको आधार र कारण निवेदनमा

स्पष्ट उल्लेख गरिएको हुनु पर्दछ ।प्रस्तुत रिट निवेदनमा विपक्षी निवेदकले दाबी लिनु भएको विषयमा यस आयोगको संलग्नता एवं प्रत्यर्थी बनाउनु पर्नाको आधार र कारण खुलाउन नसकेको हुँदा प्रस्तुत रिट निवेदन प्रथम दृष्टिमै खारेजभागी छ, खारेज गरीपाउँ ।

(ख) नागरिकता कुनै पनि राज्यको वैध नागरिक रहेको तथ्यलाई पुष्टि गर्न व्यक्तिलाई राज्यले दिएको प्रमाण हो। संविधान र कानून अनुसार त्यस राष्ट्रमा बस्ने व्यक्तिलाई वंशज वा जन्म वा अन्य आधारमा स्थायी बसोबास गरेको नाताले दिने नागरिक अधिकार नै नागरिकता हो । मतदाता नामावली ऐन, २०७३ को दफा ६ ले नेपाली नागरिकको नाम मतदाताको रुपमा मतदाता नामावलीमा दर्ता गरिने व्यवस्था गरेको छ । ऐ. ऐनको दफा २७ ले आयोगले फोटो सहितको मतदाता नामावलीमा नाम समावेश भएको मतदातालाई मतदाता परिचयपत्र उपलब्ध गराउनेछ भन्ने कानूनी व्यवस्था रहेको छ ।मतदाता नामावली फाराम र Biometric base voter registration system (BBVRS) मा मतदाताले पेश गर्ने आधार प्रमाण नागरिकतामा जे उल्लेख भएको छ सोही विवरण BBVRS मा समावेश गर्न सकिन्छ ।आयोगले फोटो तथा जैविक विवरण सहितको मतदाता नामावली संकलनका लागि (BBVRS) सफ्टवयर प्रयोग गर्दै आइरहेको छ । गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालयबाट जारी भएका नागरिकतामा उल्लेखित विवरणको आधारमा आयोगले मतदाताहरुको विवरण संकलन गरिरहेको छ । यस्तो अवस्थामा सम्बन्धित निकायबाट नागरिकताको विवरण सच्चाई वा निवेदकले दावी लिए बमोजिम लैङ्गिक पहिचान जनाउने शब्द उल्लेख भई आएको अवस्थामा सोही बमोजिम मतदाता नामावली संकलन गर्ने र सोही नामावलीको आधारमा मतदाता परिचयपत्र उपलब्ध गराउन सकिने नै हुँदा आयोगलाई विपक्षी बनाइएको हदसम्म प्रस्तुत रिट निवेदन खारेजभागी छ ।

अतः माथि उल्लेखित तथ्य, आधार र कारण समेतबाट प्रस्तुत रिट निवेदन खारेजभागी छ, खारेज गरी पाउँ।

) रिट निवेदनमा प्रत्यर्थी बनाइएका अन्य निकायबाट भए गरेको काम कारवाहीका सम्बन्धमा सम्बन्धित निकायबाट पेश हुने लिखित जवाफको व्यहोराबाट अवगत हुने नै छ ।

) प्रस्तुत मुद्दाको सुनुवाईको क्रममा उपस्थित हुनु हुने सरकारी वकीलको बहस जिकिर र पेश हुने प्रमाणलाई समेत यसै लिखित जवाफको अभिन्न अंग मानी पाउँ।

यसमा लेखिएको व्यहोरा ठीक साँचो छ। झुठ्ठा ठहरे कानून बमोजिम सहुँला बुझाउँला।

लिखित जवाफ प्रस्तुतकर्ता

राजकुमार श्रेष्ठ
नि. सचिव
निर्वाचन आयोग

इति सम्वत् २०७८ साल बैशाख महिना १९ गते रोज १ शुभम.................................



# श्री सर्वोच्च अदालतमा पेश गरेको लिखितजवाफ

## बिषय: मुद्दा न.०७७-WO-०९७३ को रिट निवेदन खारेज गरी पाउँ भन्ने

ल.जि.ल.म.न.पा.वडा नं २२, बगाल्डो स्थित इडेन गार्डेन आवासीय बिद्यालयको बिद्यालय व्यवस्थापन समितिका तर्फबाट अधिकार प्राप्त ऐ विद्यालयका प्रिन्सिपल अगस्टिन लामा बारेस ऐ विद्यालयका प्रशासनका कार्यालय संयोजक वर्ष ३० को **कीर्ति कमल जोशी**

लि.ज.प्रस्तुतकर्ता
पक्ष

विरुद्ध

जिल्ला ललितपुर, ललितपुर महानगरपालिका वडा नं. १६ पट्को टोल बस्ने
बस्ने **रुक्शाना कपाली**

निवेदक
विपक्षी

## मुद्दाः- उत्प्रेषणयुक्त परमादेश प्रतिषेध अधिकारपृच्छा समेत

उपरोक्त बिपक्षीसंगको उल्लेखित मुद्दामा यस सम्मानित अदालतबाट मिति २०७७।१२।३१ मा भएको आदेश अनुसार विद्यालयका नाउँमा जारी भएको १५ दिने म्याद मिति २०७८।०१।०९ तामेल भएकाले सोको म्याद भित्रै लिखित जावाफ दर्ता गर्नका **लागी कार्यालयको कार्य ब्यस्तता तथा कोभिडको विषम् परिस्थिति सिर्जना भई लकडाउनको कारणले गर्दा काबु बाहिरको परिस्थिती पर्न गइ म्याद गुज्रन गएकोले उक्त गुज्रेको लिखित जवाफ दिने म्याद छुट्टै निवेदनबाट थमाई थामी पाएको म्यादै भित्र प्रस्तुत लिखित जवाफ लिई उपस्थित भएको छु । मेरो लिखित जवाफ जिकिरहरु देहाय बमोजिम छन् ।**

१. विपक्षी निवेदकको निवेदन दावी सम्पुर्ण व्यहोरा संलग्न सक्कल मिसिलबाट अवगत हुने नै हुँदा यहाँ पुनरावृति गरेको छैन । संक्षेपमा निवेदन दाबी हेर्दा निवेदकले आफु परलैङ्गिक महिला (Transgender Woman) भएको बास्तबिक लैङ्गिक पहिचान सहितको आत्मसम्मानपुर्ण जिवन बाच्न पाउनु एवम् राज्यका श्रोत साधनमा समान पहुँच पाउनु आफ्नो आधारभुत मानवअधिकार भएको भन्दै निवेदक परलैङ्गिक महिला (Transgender Woman) भएकोले वन्चितिकरणमा परिएको र निबेदकले आफ्नो लैङ्गिक पहिचान अनुसार संसोधन सम्बन्धी दिएका निवेदन तथा पत्राचारहरु तथा ति कार्यालयहरुको अभिलेखबाट निवेदकको मृत नाम मृतलैङ्गिकता मेटाउन भनि आदेश जारी गरी पाँउ भन्ने रहेको देखिन्छ ।

२. मुख्यत: रिट निवेदकले यस इडेन गार्डेन आवासीय बिद्यालयबाट प्राप्त गर्ने कक्षा १० को चारित्रिक प्रमाण पत्रमा निवेदकले आफ्नो लैङ्गिक पहिचान अनुसार लैङ्गिक बिवरण "महिला" र नाम "रुक्शाना कपाली" उल्लेख गरी संशोधन गराउन निवेदन गर्नु भएको पाईन्छ । निबेदक यस बिद्यालयमा भर्ना मिति २०५८।०२।०८ गते भर्ना हुदाका बखत यस बिद्यालयमा पेश गरेको तत्कालिन ललितपुर जिल्ला, ललितपुर उपमहानगरपालिका मिति

२०५७।१२।३१ गतेको दर्ता न. १३३० जन्मदर्ता प्रमाण पत्र अनुसार निवेदकको मृतनाम कपाली र लिङ्ग पुरुष उल्लेख भए बमोजिम विद्यालयबाट प्राप्त हुने कागजात सोही मृतनाम तथा लिङ्ग उल्लेख गरी दिईएको हो ।

३. रिट निवेदकले मिति २०७६।२।२६ गते को यस विद्यालयमा दिएको निवेदनमा कक्षा ८ को जिल्ला स्तरीय परीक्षाको Mark Sheet मा आफ्नो नाम कपाली उल्लेख गरेको, २०७२ सालमा रुक्शाना कपालीको नाममा नागरिकता लिएको र संगै वडा बाट दुबै नामहरु एकै व्यक्तिका हुन् भनि प्रमाणिकरण सिफारिस समेत रखि नाम संशोधनका लागि श्री जिल्ला विकास तथा समन्वय ईकाईलाई सिफारिस गरी दिन दिएको निवेदन गरे बमोजिम यस बिद्यालयबाट मिति २०७६।०३।०३ Ref No.2076/019/03 श्री जिल्ला विकास तथा समन्वय ईकाईलाई सिफारिस पत्र प्रदान गरिए पश्चात् मिति २०७७।१०।११ गतेको रिट निवेदकले यस विद्यालयलाई पत्र लेखि आफ्नो नाम र लैङ्गिक बिवरण संसोधन गर्न निबेदन गरेकोमा रिट निबेदकको परिक्षा नियन्त्रण कार्यालय सानो ठिमी भक्तपुर को अभिलेखमा नाम कपाली लिङ्ग पुरुष भएकोमा सो अभिलेख बमोजिमको चारित्रिक प्रमाण पत्र विद्यालयले जारी गर्ने हुनाले प्रथमत सो बिवरणमा संसोधन नभई विद्यालयलेमात्र संसोधन गर्न नमिल्ने भएकाले विपक्षी निवेदकबाट दायर भएको रिट निबेदन खारेज गरी पाँउ ।

४. लिखित जवाफवालाको तर्फबाट नियुक्तहुने कानुन ब्यावसायीले गरेको बहस यसैको अंग मानि पाउँ ।

५. लिखित जवाफ दर्ता गर्दा लाग्ने दस्तुर यसै साथ पेश गरेका छौं ।

६. संलग्न कागजातहरु ।

(क) मिति २०५७।१२।३१ गतेको दर्ता नं. १३३० जन्मदर्ता प्रमाण पत्र प्रतिलिपी ।

(ख) मिति २०५८।०२।०८ गतेको Admission Form प्रतिलिपी ।

(ग) हाल रुक्शाना कपालीको (मृतनाम कपाली ) District Level Examination Board Lalitpur Mark Sheet को प्रतिलिपी ।

(घ) मिति २०७६।०३।०३ Ref No.2076/019/03 को इडेन गार्डेन आवासीय विद्यालयबाट श्री जिल्ला विकास तथा समन्वय ईकाईलाई लेखिएको सिफारिस पत्र प्रतिलिपी ।

७. माथि लेखिएको व्यवहोरा ठिक साँचो झुठ्ठा ठहरे कानून बमोजिम सहुला बुझाउला ।

लिखित जवाफ प्रस्तुतकर्ता

कीर्ति कमल जोशी

ईति सम्वत् २०७८ साल साउन महिना १७ गते रोज १ शुभम्........................

श्री सर्वोच्च अदालत ... को लिखित जवाफ ... दर्ता हुन ...

श्री सम्मानित सर्वोच्च अदालतमा चढाएको

लिखित-जवाफ

बिषयः- बिपक्षीको रिट निवेदन खारेज गरी पाउँ ।

| | |
|---|---|
| ललितपुर महानगरपालिकाको कार्यालय पुल्चोक ....................................१<br>ललितपुर महानगरपालिका वडा नं. १६ को कार्यालय ....................................१<br>समेतको तर्फबाट मुद्दा गर्न अख्तियार प्राप्त ऐ.का प्रमुख वर्ष ६३ को चिरी बाबु महर्जनको वा.ल.पु.म.न.पा. वडा नं. १० घर भई ऐ. कार्यालमा कार्यरत कर्मचारी वर्ष २३ की ममता श्रेष्ठ ....................................१ | लिखित जवाफकर्ता प्रत्यर्थी |

बिरुद्ध

| | |
|---|---|
| ल.पु.जि. ललितपुर महानगरपालिका वडा नं. १६ पतको टोल बस्ने वर्ष २२ की रुक्शना कपाली ....................................१ | रिट निवेदक बिपक्षी |

मुद्दाः- उत्प्रेषणयुक्त परमादेश । ०७७-WO-०९७३

उपरोक्त बिपक्षीले यस कार्यालय उपर समेत दायर गर्नु भएको मुद्दामा यस सम्मानित अदालतबाट जारी भइ आएको १५ दिने म्याद मिति २०७८।०१।०९ मा तामेल भएकोमा म्याद भित्रै लिखित जवाफ फिराउनु पर्नेमा कोभिड दोश्रो लहरका कारण अदालत समेत बन्दाबन्दी भइ यस सम्मानित सर्वोच्च अदालतको वृहद पूर्ण इजलासबाट मिति २०७७।०२।१५ मा भएको आदेशानुसार मिति २०७८।०४।०१ को सूचना बमोजिम म्याद भित्रै लिखित जवाफ पेश गरेको छ ।

१. विपक्षीले रिट निवेदनमा लिएका जिकीर सोही निवेदन बाट अवगत हुने हुँदा सो तर्फ केही उल्लेख गरीएको छैन । रिट निवेदन खण्डन गर्दै यो लिखित जवाफ पेश गरेको छु ।

२. प्रथमतः ललितपुर महानगरपालिका कार्यालय एक स्थानीय सरकार संचालन ऐन २०७४ को प्रस्तावना मा उल्लेखित भए बमोजिम गठन भएको स्थानीय सरकार हो । यस निकाय द्वारा गरीने कार्यले कुनै व्यक्ति विशेषलाई उच्च प्राथमिकतामा राख्ने र कुनै लाई ऐन द्वारा प्रदान गरीएको हक अधिकारमा बन्चित हुने कार्य गरेको अवस्था छैन । बिपक्षीको सन्दर्भमा यस ललितपुर महानगरपालिकाबाट जन्म दर्तामा संशोधन गरी दिएको कुरा स्वीकार गर्नु भएको छ । तर निवेदकको माग दावी जन्म दर्ता प्रमाणपत्रमा लैङ्गिक बिवरण सच्चाइ पाउँ भन्ने रहेकोमा यी निवेदकले एक पटक संशोधित जन्म दर्ता प्रमाणपत्र प्राप्त गरी सके पश्चात पुनः लैङ्गिक विवरण सच्चाइ पाउँ भनी दोश्रो पटक निवेदन माग गरेकी थिइन । स्थानीय सरकार संचालन ऐन २०७४ ले जन्म दर्ता सच्चाउन पाउने ब्यवस्था गरेको छैन । केवल जन्म दर्ता सम्म गर्न पाउने अधिकार प्रदान गरीएको छ । यस अवस्थामा बिपक्षीले रिट निवेदनमा उल्लेख गर्नु भए बमोजिम निजको जन्म दर्ता एक पटक संशोधन गरीदिएको कुरालाइ स्वीकारनै गर्नु भएको छ । यस अवस्थामा विपक्षीको कानूनी एवं संवैधानिक हकमा आघात हुने कार्य नभएकोले विपक्षीको रिट निवेदन खारेज गरी पाउँ ।

३. वस्तुतः रिट निवेदकले आफ्नो निवेदनमा कक्षा ८ देखिकै प्रमाणपत्रहरु संशोधन माग गर्नु भएको । यी निवेदक आफैले साविकमा एउटा नाम पहिचान उल्लेख गरी शैक्षिक प्रमाणपत्र प्राप्त गरी सोही आधारमा नागरीकता प्रमाणपत्र समेत बनाइ आएको र हाल यस महानगरपालिका र वडा कार्यालयमा जन्म दर्ता सच्चाइ पाउँ भनी निवेदन दिनु भएकै आधारमा यस कार्यालय र वडा कार्यालय समेतबाट कानून बमोजिम निवेदन माग दावी अनुसार लैङ्गिक विवरण सच्चाउन नमिल्ने हुँदा नै कार्यवाही नभएको सम्म हो । निवेदकले अन्य निकायहरु बाट प्राप्त गर्नु भएको प्रमाणपत्रहरुमा संशोधन गरेर ल्याउनु भएको खण्डमा कानून बमोजिम यस कार्यालयबाट जारी भएको जन्म दर्ता सच्याउन सकिने नै छ ।

४. निवेदक आफैले साबिक देखि नै यस कार्यालय एवं अन्य निकायहरुमा समेत दर्ता गर्नु भएको कागजातहरुमा फरक फरक व्यहोरा उल्लेख गर्नु भएको थियो । यसै क्रममा वडा नं १६ को कार्यालयमा स्वयं उपस्थित भइ २ वटा नाम गरेको एकै व्यक्ति हो भनी मिति २०७२।०५।२३ मा नै सिफारीस प्राप्त गर्नु भएको कुरा स्वीकार गरी रहनु भएको अवस्थामा निजको संविधान एवं कानून प्रदत्त मौलिकहरुमा आघात हुने कार्य यस कार्यालयबाट नभएको साथै निवेदक आफैले माग गरे अनुसार बिभिन्न सिफारीस प्रदान गर्दै आएको हुँदा हाल उक्त सिफारीस समेत उत्प्रेषणको आदेशले बदर गरी पाउँ भनी माग दावी लिनु भएकोले एक पटक निवेदक आफैले सिफारीस लिने र आफ्नो अनुकुल अनुसार पटक पटक त्रुटी सच्चाइ पाउँ भन्ने कार्य कहाँ सम्म कानूनतः मिल्ने हो निवेदक आफैले जानुन, तर हाल उक्त बिपक्षीले प्राप्त गर्नु भएको सिफारीस समेत उत्प्रेषणको आदेशले बदर गरी पाउँ भनी दावी लिनु भएको अवस्थामा सो सिफारीस बदर हुदैमा वा सदर नै रहेको अवस्थामा समेत निजको मौलिक हकमा आघात नहुने हुँदा बिपक्षीको रिट निवेदन खारेज गरी पाउँ ।

५. अतः माथिका प्रकरणहरुमा लेखिए बमोजिम यस कार्यालयबाट विपक्षीको संविधान प्रदत्त हक एवं कानूनी हकमा आघात पुर्याएको अवस्था नभएकाले विपक्षीको निवेदन कार्यालयको हकमा खारेज नै गरी पाउँ ।

६. यो लिखित जवाफ दर्ता गर्न हाल कानून व्यवसायी मुकरर गरेको छैन, पछि यस कार्यालयको तर्फबाट उपस्थित हुनु हुने कानून व्यवसायीको बहस बुँदालाई यसै को अभिन्न अंग मानी पाउँ ।

७. प्रस्तुत लिखित जवाफ दर्ता गर्न लाग्ने दस्तुर यसै साथ दाखिल गरिएको छ ।

८. यसमा लेखिएको व्यहोरा ठीक साँचो छ । झुठ्ठा ठहरे कानून बमोजिम सहुला बुझाउँला ।

लिखित जवाफ प्रस्तुतकर्ता
निज वा.ममता श्रेष्ठ

इति संम्वत २०७८ साल भाद्र महिना१५ गते रोज ०५ शुभम ...............................

श्री सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

मार्फत: श्री महान्यायाधिवक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं ।

विषय: सम्वत् २०७७ सालको रिट नं.: ०७७-WO-०९७३ खारेज गरिपाऊँ ।

नेपाल सरकार, शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय, सिंहदरबार, काठमाडौंको तर्फबाट ऐ. का सचिव राम प्रसाद थपलिया..........१ — लिखित जवाफ प्रस्तुतकर्ता प्रत्यर्थी

विरुद्ध

रुकशाना कपाली ..........१ — विपक्षी रिट निवेदक

मुद्दा : **परमादेश ।**

विपक्षी रिट निवेदकहरुले यस मन्त्रालय समेतलाई विपक्षी बनाई दायर गरेको रिट निवेदन उपर सम्मानित सर्वोच्च अदालतबाट मिति २०७७/१२/३१ मा भएको आदेश बमोजिम जारी पन्ध्र दिने सूचना (म्याद) मिति २०७७/१/०६ मा तामेल भएकोमा तोकिएको म्यादभित्रै निम्न प्रकरणहरूमा व्यहोरा खुलाई यो लिखित जवाफ प्रस्तुत गरेको व्यहोरा सादर अनुरोध गर्दछु।

(१) विपक्षी रिट निवेदकले आफु लगायत आफु जस्तै पारलैङ्गिक महिला, पारलैङ्गिक पुरुष, अन्तरलिङ्गी, गैर द्धयसांखिखक,समयौनिक, दीक्षित द्धयौनिक समेतका सिमान्तकृत नेपाली नागरिकले आफ्नो वास्तविक पहिचान नपाएको र सर्वोच्च अदालतबाट प्रतिपादित कतिपय नजिरहरुले लैङ्गिक पहिचान पाउनु व्यक्तिको आत्म निर्णयको अधिकार हो भन्ने मूल विषय स्थापित गरिसकेको भएपनि प्रचलित कतिपय कानूनहरुले लैङ्गिक पहिचानका सम्बन्धमा गरेको परिभाषा त्रुटीपूर्ण रहेको, सबै खाले विविधता भएका व्यक्तिहरुलाई समेट्न नसकेको कारण नेपालको संविधानको भावना तथा आधुनिक विश्वले विकास र अभ्यास गर्दै आएका मूल्य मान्यताहरु अनुरुप लैङ्गिक पहिचानको अधिकारलाई व्यापक र समावेशी रुपमा संवोधन गर्न कारण म निवेदकको संविधान प्रदत्त मौलिक हक एवं राष्ट्रिय अन्तराष्ट्रिय कानूनद्धारा संरक्षित अधिकारको हनन् हुन गएकोले प्रचलित कानूनी व्यवस्थामा संशोधन, परिमार्जनका साथै भविष्यमा निर्माण हुने कानूनमा समेत उपयुक्त व्यवस्था गर्न परमादेश लगायतको आदेश जारी गरिपाउं भन्ने मुख्य सारतत्व भएको प्रस्तुत रिट निवेदनको अन्य व्यहोरा मिसिल संलग्न रिट निवेदनबाट अवगत हुने नै हुँदा पुनरावृत्ति गरिरहनु परेन ।

(२) विपक्षी रिट निवेदकहरुको रिट निवेदन देहायका कारण र आधारमा खारेजभागी हुँदा खारेज गरिपाऊँ:

राम प्रसाद थपलिया
सचिव



(क) विपक्षी रिट निवेदकले यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा अन्य शब्द जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका २०६९, नागरिकता नियमावली,२०६३ को अनुसूची-१,नागरिकता सम्बन्धी प्रचलित ऐन, नियम, उमेर नाम र जात सच्चाउने नियमहरु २०१७, राष्ट्रिय परिचयपत्र तथा पञ्जिकरण ऐन, २०७६ मा त्रुटीपूर्ण व्यवस्था रहेकाले आफुहरुले लैङ्गिक विवरण सच्चाउन असमर्थ रहेको भन्ने दावी गरेको देखिन्छ। निजहरुले दावी गरेका उल्लिखित ऐन, नियम तथा निर्देशिका यस मन्त्रालयसंग सम्वन्धित नै रहेका छैनन भने निजहरुले रिट निवेदनमा दृष्टान्तको रुपमा पेश गरेका सुनिलवावु पन्त (नेकाप २०६५, अंक ४, नि. नं ७९५८), (नेकाप २०७४, अंक ९, नि.नं ९८७५), रजनी शाही वि. राष्ट्रिय महिला आयोग (नेकाप २०७०, अंक १, नि.नं ८९४५), सुमन पन्त समेत वि. गृह मन्त्रालय अध्यागमन विभाग (नेकाप २०७४, अंक १२ नि.नं. ९९२१) समेतका सम्मानित अदालतबाट प्रतिपादित कुनैपनि सिद्धान्त यस मन्त्रालयको हकमा प्रस्तुत रिट निवेदनको सन्दर्भमा आकर्षित हुने अवस्था पनि छैन। विपक्षी रिट निवेदकले यस मन्त्रालयका नाउंमा कुनै प्रकारको आदेश जारी गर्न माग समेत नगरी केवल अनावश्यक रुपमा विपक्षी मात्र बनाएको देखिन्छ। रिट निवेदनमा कसैलाई विपक्षी बनाउनु मात्र पर्याप्त हुँदैन, विपक्षी बनाउनु पर्ने मनासिव आधार र कारण पनि खुलाउनु पर्ने हुन्छ । यस मन्त्रालयको के कस्तो काम, कारबाहीबाट रिट निवेदकको नेपालको संविधान र प्रचलित कानूनद्वारा प्रदत्त कस्तो हक अधिकार हनन् हुन गएको भन्ने रिट निवेदकले आफ्नो रिट निवेदनमा कहिंकतै खुलाउन सकेको अवस्था छैन । यसरी बिना आधार र कारण हचुवाको भरमा यस मन्त्रालयलाई समेत विपक्षी बनाई दायर गरिएको निवेदकको रिट निवेदन प्रथम दृष्टि (Prima Facie) मै खारेजभागी छ, खारेज गरिपाउं ।

(ख) विपक्षीको रिट निवेदनमा माध्यामिक शिक्षा उत्तीर्ण (एस.एल.सी) परिक्षा सञ्चालन तथा व्यवस्थापन निर्देशिका, २०६८ को दफा ४५(१) र ४५(२) तथा उच्च माध्यामिक शिक्षा परिषद परिक्षा सम्बन्धी निर्देशिका, २०६८ को दफा ५ ले निवेदक समेतका हजारौं नागरिकहरुलाई शैक्षिक प्रमाणपत्र जस्ता कानूनी कागजपत्रमा जन्मदाको यौनाङ्गको आधारमा इंगित नाम तथा लैङ्गिक विवरण संशोधन, परिवर्तन गरी वास्तविक लैङ्गिक पहिचान बमोजिमको नाम र लिङ्ग कायम गर्न असमर्थ बनाई संविधान प्रदत्त मौलिक हक अधिकारको उपभोग गर्नबाट बञ्चित गरेको भन्ने दावी गरेकामा निजहरुको सो दावी गलत एवं आधारहिन हो। माध्यमिक शिक्षा तथा उच्च माध्यमिक शिक्षा अध्ययन गरी सोको शैक्षिक प्रमाणपत्र लिने समय सम्म निवेदक उमेरका कारण वयस्क र परिपक्क भैसकेका हुन्छन, निजको लिङ्ग पहिचान भैसकेको हुन्छ। निजहरु पारलैङ्गिक महिला, पारलैङ्गिक पुरुष, अन्तरलिङगी, गैर द्ध्यसांख्खिक, समयौनिक, दीक्षित द्वयौनिक जे जस्तो भएपनि पहिचान भैसकेको हुन्छ वा निजहरुको स्वः अनुभूति अनुसारको लैङ्गिता स्पष्ट भैसकेको हुन्छ। सो अवधि सम्म निजहरुको जन्मदर्ता, नागरिकता, जस्ता आवश्यक कागजात बनिसकेका हुने र निजहरुले पेश गर्ने सोही कागजातका आधारमा शैक्षिक प्रमाणपत्र जारी हुने हो । तथापी गो अवधि सम्म आवश्यक कागजातहरु बनाई नसकेका वा बनाएको भएपनि ती कागजातहरु संशोधन, परिमार्जन गरी सम्बन्धित निकायको सिफारिस सहित

राम प्रसाद घ. [illegible]
सचिव

नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
सिंहदरबार, काठमाडौं

आएमा शैक्षिक अभिलेख वा कुनैपनि शैक्षिक प्रमाणपत्र संशोधनका लागि कुनै पनि कानूनले रोकेको अवस्था छैन। विपक्षी रिट निवेदकले दिनदैन्य रुपमा लिङ्ग परिवर्तन गरिरहने वा निजहरुको स्वः अनुभूति क्षण क्षणमा परिवर्तन भैरहने अवस्था हो भने क्षण क्षणमा नै शैक्षिक अभिलेख सच्चाईरहन संभव हुंदैन तर सो वाहेक सामान्यतः निजलाई आफ्नो लैङ्गिक पहिचान कायम गरी शैक्षिक प्रमाणपत्र लिन वा संविधानले प्रत्याभूत गरेको कुनैपनि प्रकारको संवैधानिक र कानूनी हक अधिकारको उपयोग गर्न शिक्षा सम्वन्धि कुनैपनि ऐन, नियम वा निर्देशिकाले वाधा अवरोध सिर्जना गरेको छैन। यस्तो अवस्थामा आधारहिन तर्क गरी अनावश्यक रुपमा यस मन्त्रालयलाई विपक्षी वनाई दायर गरेको प्रस्तुत रिट निवेदन खारेज हुनुपर्छ ।

(ग) तसर्थः यस मन्त्रालयको कुनैपनि काम कारवाही वा यस मन्त्रालयसंग सम्वन्धित ऐन, नियम, निर्देशकाबाट रिट निवेदकको कुनैपनि प्रकारको संवैधानिक एवं कानूनी हक अधिकार हनन् नभएको, स्वः अनुभूति अनुरुपको लैङ्गिक पहिचान खोज्ने रिट निवेदक समेतका सबै प्रकारका लैङ्गिकयुक्त नेपाली नागरिकको हक अधिकारको संरक्षणको लागि प्रतिवद्ध रहेको यस मन्त्रालयलाई समेत विपक्षी कायम गरी कुनै स्पष्ट आधार, कारण विना हचुवाको भरमा दायर गरेको प्रस्तुत रिट निवेदनको कुनै अर्थ र औचित्य सावित हुन नसक्ने हुंदा निजको रिट निवेदन खारेज भागी छ, खारेज हुनुपर्छ ।

(३) प्रस्तुत रिट निवेदनमा दावी गरिएका अन्य विषयमा विपक्षी बनाईएका तत् तत् निकायहरु मार्फत प्राप्त हुने लिखित जवाफबाट सम्मानित अदालतलाई जानकारी हुने नै हुँदा थप खण्डन गरिरहनु परेन ।

(४) अतः प्रकरण नं. २ मा उल्लेखित वुँदा एवम् प्रमाणका आधारमा विपक्षीको रिट निवेदन खारेजभागी हुँदा खारेज गरी पाउन सम्मानित अदालत समक्ष सादर अनुरोध गर्दछु ।

(५) यसमा महान्यायाधिवक्ताको कार्यालयबाट प्रस्तुत हुने बहस, पैरवी एवम् प्रतिरक्षा समेतलाई यसै लिखित जवाफको अभिन्न अंग मानी पाउँ ।

(६) यसमा लेखिएको व्यहोरा ठीक साँचो छ, झुठ्ठा ठहरे कानुन बमोजिम सहूँला बुझाउँला ।



लिखित जवाफ प्रस्तुतकर्ता

(राम प्रसाद थपलिया)

सचिव

शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय

इति सम्वत् २०७८ साल वैशाख महिना ९ गते रोज ५ शुभम्.................................................

श्री सर्वोच्च अदालतबाट

श्री सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

मार्फतः-श्री महान्यायाधिवक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं ।

रिट नं. ०७७- WO-०९७३

नेपाल सरकार, गृह मन्त्रालयको तर्फबाट ऐ .का
सचिव महेश्वर न्यौपाने ..................................................................लिखित जवाफ प्रस्तुतकर्ता
प्रत्यर्थी

विरुद्ध

रुक्सना कपाली ......................................................................................................विपक्षी
रिट निवेदक

मुद्दाः- परमादेश ।

उपर्युक्त विपक्षीले यस मन्त्रालय समेतलाई विपक्षी बनाई सम्मानित सर्वोच्च अदालत समक्ष दायर गर्नु भएको उल्लेखित रिट निवेदनका सम्बन्धमा सम्मानित अदालतबाट यसमा के, कसो भएको हो? निवेदकको माग बमोजिम आदेश किन जारी हुनु नपर्ने हो? आदेश जारी हुन नपर्ने मनासिव आधार र कारंण भए सो समेत खुलाई सूचना म्याद प्राप्त भएका मितिले बाटाको म्याद बाहेक १५ (पन्ध्र) दिन भित्र महान्यायाधिवक्ताको कार्यालय मार्फत् लिखित जवाफ पेश गर्नु भन्ने व्यहोराको मिति २०७७/१२/३१ मा जारी भएको आदेश सहितको म्याद सूचना यस मन्त्रालयमा मिति २०७८/०१/०६ मा तामेली हुन आएकोमा तोकिएको म्याद भित्र निवेदकको माग बमोजिम आदेश जारी हुनु नपर्ने व्यहोराको आधार, कारणहरु खुलाई यो लिखित जवाफ प्रस्तुत गरेको छु।

१. निवेदकको मुख्य व्यहोरा मुलतः मेरो व्यक्तिगत कागज प्रमाणहरुमा उल्लेखित नाम तथा लैङ्गिक विवरण मेरो वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण महिला र नाम रुक्शना कपाली उल्लेख गरि संशोधन गर्न गराउन भनि जन्मदर्ताका हकमा राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग, ललितपुर महानगरपालिकाको कार्यालय र ललितपुर महानगरपालिका वडा नं. १६ कार्यालयको नाउँमा कक्षा ८ को शैक्षिक प्रमाणपत्रको हकमा जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ ललितपुरको नाउँमा, नागरिकता प्रमाणपत्रको हकमा गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालय ललितपुरको नाउँमा, राहदानीको हकमा राहदानी विभागको नाउँमा, मतदाता परिचयपत्रको हकमा निर्वाचन आयोगको नाउँमा, कक्षा १० को चरित्रिक प्रमाणपत्रको हकमा इडेन गार्डेन आवासिय विद्यालयको नाउँमा लगायत सम्पूर्ण विपक्षी कार्यालयहरुद्वारा प्रदान गरिने मेरो व्यक्तिगत

कागजप्रमाणमा समेत समयसिमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समयसिमा समेत तोकी परमादेश लगायत उपयुक्त आदेश जारी गरीपाउँ भन्ने समेत व्यहोराको जिकिर रहेको छ ।

२. गृह मन्त्रालय संविधान एवं कानून प्रद्दत नागरिकका हक अधिकारको संरक्षण र सम्वर्धन गर्न सदा कटिबद्ध रहेको छ। संविधान र अन्य प्रचलित कानूनमा व्यवस्था गरिएका हक अधिकार प्रत्येक नागरिकको लागि समान रुपमा लागु हुने र त्यस्तो कानूनद्वारा प्रदान गरिएको हक अधिकारबाट बञ्चित गर्ने कुनै पनि आदेश दिइएको छैन। जहाँ सम्म निवेदकको माग दावी बमोजिमको व्यक्तिगत कागज प्रमाणहरु उल्लेखित नाम तथा लैङ्गिक विवरणमा वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण महिला र नाम रुक्शना कपाली उल्लेख गरी नागरिकता प्रमाणपत्रको संसोधन गर्न गराउन माग रहेकोमा नेपाल नागरिकता ऐन, २०६३ को दफा १७ को उपदफा (१) मा कुनै व्यक्तिले आफ्नो नेपाली नागरिकताको प्रमाणपत्रमा उल्लिखित थर वा उमेर शैक्षिक योग्यताको प्रमाणपत्रमा फरक पर्न गई वा नागरिकताको प्रमाणपत्रमा सानातिना त्रुटी भई सो विवरण सच्याउन चाहेमा आवश्यक प्रमाण सहित तोकिएको अधिकारी समक्ष निवेदन दिनु पर्नेछ भनी सोही उपदफाको स्पष्टीकरण खण्डमा यस उपदफाको प्रयोजनको लागि "सानातिना त्रुटी" भन्नाले नागरिकताको प्रमाणपत्रमा उल्लिखित विवरणमा तात्विक अन्तर नपर्ने जस्तैः "कुमारी", "देवी", "बहादुर", "प्रसाद" जस्ता शब्द बढी राखिएको वा छुटेको वा आकार, इकारमा फरक परेको वा यस्तै अन्य सानातिना त्रुटीलाई जनाउँनेछ भनी व्यवस्था गरेको हुनाले कुनै पनि विषयमा के कस्तो कानून निर्माण वा संशोधन गर्नु पर्ने भन्ने विषय विधायिकाको अधिकार क्षेत्र भित्र पर्ने विषय भएको हुनाले यस मन्त्रालयलाई विपक्षी बनाउनु पर्ने कुनै पनि आधार कारण छैन। विना आधार र कारण यस मन्त्रालयलाई समेत विपक्षी बनाई दायर भएको प्रस्तुत रिट निवेदन खारेज भागी हुँदा खारेज गरी पाउँ।

३. रिट निवेदकले विपक्षी बनाइएका अन्य निकायबाट प्रस्तुत हुने लिखित जवाफबाट थप पुष्टि हुने नै छ।

४. प्रस्तुत मुद्दाको सुनुवाईको क्रममा उपस्थित हुनु हुने सरकारी वकीलको बहस जिकिर तथा निजले पेश गर्न सक्ने प्रमाण, कागजातलाई समेत यसै लिखित जवाफको अभिन्न अंग मानी पाउँ।

लिखित जवाफ प्रस्तुतकर्ता

..........................

(महेश्वर न्यौपाने)

सचिव

इति सम्वत् २०७८ साल बैशाख महिना १४ गते रोज ३ शुभम् ..............................।

श्री सर्वोच्च अदालतमा चढाएको

लिखित जवाफ

मार्फतः श्री महान्यायाधिवक्ताको कार्यालय,

रामशाहपथ,काठमाडौं।

सम्वत् २०७७ सालको रिट नं. ----------------------------------------W0-०९७३

कानून, न्याय तथा संसदीय मामिला मन्त्रालयको तर्फबाट ऐ. को सचिव उदयराज सापकोटा------------------------------------ लिखित जवाफ प्रस्तुतकर्ता प्रत्यर्थी

विरुद्ध

रुक्शना कपाली -------------------------------------------- विपक्षी निवेदक

विषयः उत्प्रेषण, परमादेश समेत ।

निवेदकले यस मन्त्रालय समेतलाई विपक्षी बनाई सम्मानित अदालत समक्ष दायर गर्नु भएको सम्वत् २०७७ सालको रिट नं. W0-०९७३ को रिट निवेदनमा के कसो भएको हो? निवेदकको माग बमोजिमको आदेश किन जारी हुनु नपर्ने हो ? आदेश जारी हुनु नपर्ने आधार र कारण भए बाटाको म्याद बाहेक १५ दिनभित्र महान्यायाधिवक्ताको कार्यालय मार्फत लिखित जवाफ पठाउनु भन्ने आदेश सहितको सूचना मिति २०७८।०१।०६ मा यस मन्त्रालयमा प्राप्त भएकोले म्यादभित्रै मन्त्रालयसँग सम्बन्धित विषयवस्तुमा सीमित रही देहाय बमोजिमको लिखित जवाफ प्रस्तुत गरेको छु।

१. म निवेदक पारलैङ्गिक महिला (Transgender Woman) नेपाली नागरिक हुँ। कक्षा १० र १२ को शैक्षिक प्रमाणपत्रहरुमा मेरो नाम र लैङ्गिक विवरण नमिलेको आधारमा त्रिभुवन विश्वविद्यालयले मैले पेश गरेको रजिष्ट्रेशन फारम दर्ता गर्न इन्कार गरेको र मेरो वास्तविक लैङ्गिक पहिचान उल्लेख नगरी जारी भएका नागरिकता तथा शैक्षिक कागजप्रमाणका व्यक्तिगत विवरण संशोधन हुन नसकेका कारण अपमानित समेत हुनु परेकाले नेपालको संविधानको धारा १६, १८, २८, ३१, ३३, ३५, ३८, ३९ र ४२ द्वारा प्रदत्त

अधिकारको हनन भएको हुँदा मेरो वास्तविक लैङ्गिक पहिचान अनुसारको नाम "रुक्शना कपाली" र लैङ्गिक विवरण "महिला" उल्लेख गरी रजिष्ट्रेशन फारम दर्ता गर्नु र जारी भईसकेका जन्मदर्ता, नागरिकता, राहदानी, मतदाता परिचयपत्र र शैक्षिक प्रमाणपत्रमहरुमा मेरो वास्तविक लैङ्गिक पहिचान अनुसारको परिचय कायम गरी संशोधन गर्नु गराउनु तथा सोको लागि आवश्यक नीतिनियम, कानून, कार्यविधिमा संशोधन गर्नु गराउनु भनी परमादेश जारी गरी पाउँ भन्ने समेत व्यहोराको निवेदन जिकिर रहेछ।

२. सर्वप्रथमतः यस मन्त्रालयको के कस्तो कामकारवाही वा निर्णयबाट निवेदकको के कस्तो कानूनी तथा संवैधानिक अधिकारमा आघात पुग्न गएको हो ? सो सम्बन्धमा रिट निवेदन जिकिरमा कुनै कुरा उल्लेखसम्म गर्न नसकेको हुँदा विना आधार र कारण यस मन्त्रालयलाई विपक्षी कायम गरी रिट निवेदन दायर गर्न मिल्ने पनि होइन । साथै कुनै मुद्दामा विपक्षी कायम गर्दा त्यस्तो विपक्षीको के कस्तो कामकारवाहीबाट निवेदकलाई के कस्तो अन्याय पर्न गएको हो सो कुरा खुलाउनु पर्ने हुन्छ। सो सम्बन्धमा समेत रिट निवेदनमा कुनै कुरा उल्लेख गर्न नसेकेको हुँदा रिट निवेदन जिकिर प्रथम दृष्टिमा नै खारेज भागी छ, खारेज गरी पाउँ ।

३. नेपालको संविधानको धारा १६ देखी धारा ४६ सम्म विभिन्न मौलिक हक सम्बन्धी व्यवस्था गरी त्यस्तो हक उल्लङ्घन भएमा वा ती अधिकारहरु उपभोग गर्नबाट बञ्चित गरिएमा संवैधानिक उपचारको समेत व्यवस्था गरिएको छ । संविधान तथा कानूनद्वारा प्रदत्त अधिकारको विना विभेद सबै नागरिकले उपभोग गर्न पाउनु पर्ने कुरामा नेपाल सरकार सचेत एवं क्रियाशिल छ । संविधानको धारा १६ मा सम्मानपूर्वक बाँच्न पाउने हक, धारा १७ मा स्वतन्त्रताको हक, धारा १८ मा समानताको हक सम्बन्धी व्यवस्था गरी सोही धाराको उपधारा (१) मा सबै नागरिक कानूनको दृष्टिमा समान हुने र कानूनको समान संरक्षणबाट बञ्चित नगरिने, उपधारा (३) मा राज्यले नागरिकहरुको बीचमा लिङ्गका आधारमा समेत विभेद नगर्ने तर लैङ्गिक पहिचान र यौनिक अल्पसंख्यक समेतको सशक्तिकरण वा विकासको लागि कानून बमोजिम विशेष व्यवस्था गर्न सकिने व्यवस्था भए बमोजिम नै नेपाल सरकारले नीति तथा कानून बनाउँदा वा सशोधन गर्दा सो विषयलाई ध्यान दिने गरेको छ ।

४. नेपालको संविधानको धारा १२ मा वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्ने व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैङ्गिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्ने व्यवस्था रहेको छ। नेपाल नागरिकता ऐन, २०६३, राष्ट्रिय परिचयपत्र तथा पञ्जिकरण ऐन, २०७६, राहदानी ऐन, २०७६, मतदाता नामावली ऐन, २०७३ मा क्रमशः नागरिकताको प्रमाणपत्र, जन्मदर्ता, राहदानी र मतदाता परिचयपत्र प्राप्ति सम्बन्धी व्यवस्था गरी उक्त प्रमाणपत्रमा उल्लिखित विवरणहरुमध्ये केही निश्चित विवरण सच्याउन सकिने व्यवस्था समेत रहेको छ। जहाँसम्म उक्त प्रमाणपत्रहरुमा उल्लिखित लैंगिक पहिचानसँग सम्बन्धित कुरा संशोधन गर्ने विषय छ, सो सम्बन्धमा

नागरिकता लगायतका प्रमाणपत्रमा गरिने सामान्य संशोधनले पनि पार्ने असर (chain of effect) को विश्लेषण हुन जरुरी हुन्छ। नागरिकताको प्रमाणपत्र राज्य र नागरिकको बीचको कानूनी सम्बन्ध स्थापित गर्ने महत्वपूर्ण लिखत भएको र नागरिकता प्राप्ति पश्चात जारी गरिने व्यक्तिका विभिन्न कानूनी लिखतहरु सोही नामका आधारमा जारी गरिने हुँदा नागरिकतामा गरिने सामान्य परिवर्तनले निजलाई मात्र नभइ निजसँगको कानूनी सम्बन्धका आधारमा गरिने अन्य व्यक्तिको काम कारवाहीमा समेत प्रभाव पार्ने कुरालाई मनन् गरी विधायिकाले नागरिकता लगायतका प्रमाणपत्र संशोधनका सम्बन्धमा सावधानी अपनाएको पाइन्छ । त्यस्तो प्रमाणपत्रमा गरिने संशोधन वा परिवर्तनले व्यक्ति स्वयंलाई संविधान र कानूनप्रदत्त हक अधिकार उपभोग गर्ने क्रममा समेत असहज तथा अन्यौलताको अवस्था सृजना हुन्छ । साथै राज्यबाट प्रवाह हुने सेवा र राज्यप्रतिको नागरिकको कर्तव्यलाई स्पष्टता कायम गर्ने अभिप्रायले गरिएको कानूनी व्यवस्थालाई अन्यथा भन्न मिल्ने हुँदैन।

५. संविधान तथा कानूनद्वारा प्रदत्त निवेदकको गोपनियताको अधिकार संरक्षण हुनु पर्ने कुरामा कुनै दुविधा छैन । जहाँसम्म त्रिभुवन विश्वविद्यालयले रजिष्ट्रेशन फारम दर्ता गर्न इन्कार गरेको तथा अन्य शैक्षिक प्रमाणपत्रमा निवेदकको वास्तविक लैंगिक पहिचान उल्लेख गराउन इन्कार गरिएको भन्ने लगायतको निवेदन जिकिर छ, तत्सम्बन्धमा त्रिभुवन विश्वविद्यालय लगायतका सम्बन्धित निकायको लिखित जवाफबाट प्रष्ट हुने नै हुँदा प्रस्तुत लिखित जवाफमा थप उल्लेख गरिरहनु परेन ।

६. मुद्दाको सुनुवाईको क्रममा उपस्थित हुनु हुने सरकारी वकीलको बहस जिकिर समेतलाई यस लिखित जवाफको अभिन्न अंग मानी पाउँ ।

७. अत: उल्लिखित आधार तथा कारणबाट रिट निवेदन खारेज गरी पाउन सम्मानित अदालत समक्ष सादर अनुरोध गर्दछु।

<u>लिखित जवाफ प्रस्तुतकर्ता</u>

(उद्धवराज सापकोटा)

सचिव

कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय

इति सम्वत् २०७८ साल वैशाख १९ गते रोज १ शुभम्.................................।



# श्री सर्वोच्च अदालतमा पेश गरेको
# लिखित जवाफ

मार्फत : महान्यायाधिवक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं ।
विषय : आधारहीन रिट निवेदन खारेज गरिपाँऊ ।

राष्ट्रिय मानव अधिकार आयोग, हरिहरभवन, पुल्चोक, ललितपुरका तर्फबाट अख्तियार प्राप्त व्यक्ति एवं ऐ. को का.मु.सचिव मुरारीप्रसाद खरेल................१ पक्ष
लि.ज.प्रस्तुतकर्ता

विरुद्ध

ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं. १६ बस्ने वर्ष २२ को रुक्शना कपाली..........................................................................१ विपक्ष
रिट निवेदक

मुद्दा : परमादेश लगायत जो चाहिने आज्ञा आदेश जारी गरिपाँऊ (रिट नं. ०७७-wo-०९७३)

माथि उल्लिखित रिट निवेदनमा सम्मानित सर्वोच्च अदालतबाट जारी भएको लिखित जवाफ फिराउने १५ दिने म्याद यस आयोगमा मिति २०७८ । १ । १० गते तामेल भएकोमा नेपाल लगायत संसारभर फैलिएको कोरोना महामारी (कोभिड - १९) का कारण सम्मानित सर्वोच्च अदालतले प्रवाह गर्ने सेवामा सङ्कुचन भएकोले सम्मानित सर्वोच्च अदालतको बृहत् पूर्ण इजलासको मिति २०७७ । ३ । १५ को आदेशबमोजिमको म्यादैभित्रै देहायबमोजिमको लिखित जवाफ पेश गरेको छु ।

१. विपक्षीको रिट निवेदनको सम्पूर्ण व्यहोरा रिट निवेदनको अध्ययनबाट स्पष्ट हुने नै हुँदा यहाँ सो को पुनरावृत्ति गरिएको छैन ।

२. आफूले महिलाको पहिचान राखी त्रिभुवन विश्वविद्यालयमा रजिष्ट्रेशन गर्नका लागि प्रक्रिया अगाडि बढाएको भए पनि सो विश्वविद्यालयले त्यसअनुरुप रजिष्ट्रेशन नगरिदिएको




नागरिकताको प्रमाणपत्रमा भएको "अन्य" को सट्टा महिलाको पहिचानयुक्त नागरिकता पाउन गृह मन्त्रालयसमेतमा निवेदन दिँदा सो को सुनुवाई नभएको, प्रथम पटक लिएको राहदानीमा महिला उल्लेख भए पनि दोस्रो पटक लिएको राहदानीमा महिला नभई "अन्य" उल्लेख भएको र सोविरुद्ध राहदानी विभागमा निवेदन गर्दा सुनुवाइ नभएको एवम् आफूले आवेदन नै नगरेको "तेस्रो लिङ्गी" उल्लेख गरी निर्वाचन आयोगले मतदाता परिचयपत्र जारी भएकोले तत् तत् निकायहरुविरुद्ध परमादेश लगायत जो चाहिने आज्ञा आदेश जारी गरिपाँऊ भन्नेसमेत व्यहोराको रिट निवेदकको माग दाबी रहेछ ।

३. विश्वविद्यालयमा रजिष्ट्रेशन गर्ने, नागरिकताको प्रमाणपत्र प्रदान गर्ने, राहदानीको त्रुटी सच्याउँने एवम् मतदाता परिचयपत्र दिने जस्ता कार्यहरु यस आयोगसित सम्बन्धित नै नभएकाले असम्बन्धित विषयमा आयोगलाई विपक्षी बनाई दायर भएको प्रस्तुत रिट निवेदन खारेज भागी छ, खारेज गरिपाँऊ ।

४. नेपालको संविधानको धारा २४९ तथा राष्ट्रिय मानव अधिकार आयोग ऐन, २०६८ को दफा ४ मा उल्लिखित काम, कर्तव्य र अधिकार मुताबिक क्रियाशील रहेको यस आयोगको सबैले विभेदरहित तवरबाट मानव अधिकारको उपभोग गर्न पाउँनु पर्ने स्पष्ट मान्यता रहेको छ ।

५. रिट निवेदक लगायत सबैको मानव अधिकारको सम्मान, संरक्षण र संवर्धन गर्ने आफ्नो संवैधानिक कर्तव्यप्रति आयोग सचेत र क्रियाशील रहेकोले आयोगलाई विपक्षी बनाई दायर भएको प्रस्तुत रिट निवेदन खारेज गरिपाँऊ ।

६. प्रस्तुत रिट निवेदनको सुनुवाइका क्रममा उपस्थित हुनुहुने विद्वान सरकारी वकिलको बहस - जिकिर समेतलाई यसै लिखित जवाफको अभिन्न अङ्ग मानिपाँऊ ।

लिखित जवाफ प्रस्तुतकर्ता




..........................
(मुरारीप्रसाद खरेल)
का.मु.सचिव
राष्ट्रिय मानव अधिकार आयोग

इति संवत २०७८ साल साउन १८गते रोज १ शुभम् ..........................................।

५

श्री सर्वोच्च अदालतबाट

श्री सर्वोच्च अदातलमा चढाएको
लिखित जवाफ

त्रि.वि.परीक्षा नियन्त्रण कार्यालयको तर्फबाट ऐ.का.परिक्षा नियन्त्रक...१, त्रि.वि.उपकुलपतिको कार्यालयको तर्फबाट ऐ.का.प्रमुख विष्णुप्रसाद अर्याल समेत जना २ को वारेस त्रि.वि.कानुनी सल्लाहकारको कार्यालयमा कार्यरत जयराम बाँस्कोटा............................................................................................लिखित जवाफ प्रस्तुतकर्ता

विरुद्ध

रुक्सना कपाली ..........................................................................................रिट निवेदक विपक्षी

मुद्दा : उत्प्रेषण (२०७७-WO-०९७३)

उपरोक्त विपक्षीसँगको उक्त मुद्दामा सम्मानित अदालतबाट मिति २०७८ ०१ ०५ मा भएको आदेश सहितको १५ दिने म्याद सूचना मिति २०७८ ०१ ०६ गते प्राप्त भएकोमा उक्त म्यादैभित्र लिखित जवाफ दर्ता गर्नुपर्नेमा कोभिड १९ को कारणले निषेधाज्ञा भएको र सम्मानित अदालतको मिति २०७८ ०४ ०१ को सूचना बमोजिम ३० दिनभित्र लिखित जवाफ प्रस्तुत गरेको छु ।

१. त्रिभुवन विश्वविद्यालय, त्रिभुवन विश्वविद्यालय ऐन, २०४९ द्वारा संचालित नेपालको सर्वाङ्गीण विकासको लागि आवश्यक दक्ष जनशक्ति तयार गर्न, स्तरयुक्त उच्च शिक्षा प्रदान गर्न, विविध पक्षमा अनुसन्धान गर्न, राष्ट्रिय संस्कृति र परम्पराको संरक्षण र विकास गर्न, कला, विज्ञान प्रविधि तथा व्यवसायीक क्षेत्रको ज्ञान र अनुसन्धानलाई व्यापक एवं व्यवहारिक र समयसापेक्ष बनाउने उद्देश्यका साथ विश्वविद्यालयको स्थापना भएको हो । त्रि.वि.ऐन २०४९ को दफा ४ ले विश्वविद्यालय अविछिन्न उत्तराधिकारीवाला एक स्वसाशित र संगठित संस्थाको रुपमा रहने व्यवस्था गरेको छ । त्यस्तै ऐनको दफा ५ मा विश्वविद्यालयको काम कर्तव्य र अधिकारको सम्बन्धमा व्यवस्था गरिएको छ । दफा ५ (ख) मा आंगिक क्याम्पस तथा सम्बन्धन प्राप्त क्याम्पसहरुबाट तोकिएको उच्च शिक्षा हासिल गर्ने विद्यार्थी प्रशाक्षार्थी वा अनुसन्धानकर्तालाई तोकिए बमोजिमको प्रमाणपत्र दिने र विशिष्ट व्यक्तिलाई मानार्थ उपाधी प्रदान गर्ने सम्बन्धी व्यवस्था गरिएकोछ । दफा २७ मा विश्वविद्यालयमा भर्ना हुन चाहिने योग्यता तोकिए बमोजिम हुनेछ भन्ने व्यवस्था छ । त्रि.वि.सगठन तथा शैक्षिक प्रशासन सम्बन्धी नियम २०५० को परिच्छेद ४ को नियम ११ मा आंगिक क्याम्पसको काम कर्तव्य र अधिकारको सम्बन्धमा व्यवस्था गरिएकोछ भने उक्त नियमको परिच्छेद ५८ मा परिक्षा नियन्त्रण कार्यालय र परिच्छेद ६१ मा ट्रान्सक्रिप्ट जारी सम्बन्धी व्यवस्था गरिएको छ ।

२. त्रिभुवन विश्वविद्यालय उच्च शिक्षा अध्ययन अध्यापन गराउने शैक्षिक सस्था हो । विश्वविद्यालय अन्तर्गत भर्ना हुन चाहने विद्यार्थीहरुले S.L.C. पास गरी +२ समेत अध्ययन गरी उत्तीर्ण भई S.L.C र +२ को प्रमाणपत्र भर्ना हुन चाहने विद्यार्थीहरुले ... विश्वविद्यालयले जुन नामबाट S.L.C र +२ को प्रमाणपत्र नागरिकताको प्रमाणपत्र समेत पेश गर्नु पर्ने हुन्छ ।

मस्यौदाकार

प्राप्त गरेको छ सोही नामबाट नै विद्यार्थीलाई भर्ना गर्ने गर्दछ । +२ उत्तीर्ण नभएको विद्यार्थीले विश्वविद्यालयमा उच्च शिक्षा अध्ययन गर्न पाउदैन । विपक्षी रीट निवेदकले आफ्नो रीट निवेदनको प्रकरण नं ४ र ५ मा आफ्नो नाम रुक्शाना कपाली नभएको र मेरो परिवारले राखेको नामबाट नै जन्म दर्ता लगायत स्कुलमा अध्ययन गर्दा समेत उक्त नामबाट प्रमाण पत्रहरु प्राप्त गर्न नसकेको भनि स्विकार गर्नु भएको छ । यसरी विपक्षीले रिट निवेदनमा मैले रुक्शाना कपालीको नामबाट नै S.L.C , +२ र नागरिकता प्राप्त गरेकोले मलाई सोही नामबाट नै भर्ना गरी पाऊँ भनी दावि लिन सक्नु भएको छैन । विपक्षीले जुन नामबाट S.L.C र +२ र नागरिकता प्राप्त गर्नु भएको छ सोही नामबाट नै विश्वविद्यालयले भर्ना गर्ने र प्रमाणपत्र जारी गर्ने हुंदा विपक्षीको रिट निवेदन खारेज गरी न्याय पाऊँ ।

३. यसमा लेखिएको व्यहोरा ठीक साँचो हो झुट्टा ठहरे सहुला बुझाउँला ।

लिखित जवाफ प्रस्तुतकर्ता
निज वा.जयराम बाँस्कोटा

ईति सम्वत २०७८ साल भाद्र ११ गते रोज ६ शुभम.........................